


# सार्वजनिक वक्तव्य




**नेपाल संवत् ११४१/०४/१७**
**मिति २०७७ माघ २१ गते**




हामी सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताका व्यक्तिहरूको अधिकारका क्षेत्रमा कार्यरत संस्था क्वयेर युथ ग्रुप (Queer Youth Group) र क्याम्पेन फर चेन्ज (Campaign for Change), आज '**यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता (यौभिकयौता) : आधारभूत अवधारणा**' नामक पुस्तक सार्वजनिक गर्दैछौँ ।

नेपाली भाषामा प्रकाशित यस पुस्तकले यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता बारेमा आधारभूत जानकारी प्रदान गर्दछ । हामी क्याम्पेन फर चेन्जले सन् २०१६ देखि र क्वयेर युथ ग्रुपले सन् २०१८ देखि यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताको अवधारणलाई नेपाली भाषामा लिपिबद्ध गरि विभिन्न माध्यमहरूबाट जनचेतना जगाउने प्रयास गर्दै आइरहेका छौँ । यसै क्रममा हामीहरूले प्रकाशनमा ल्याएको यो पहिलो पुस्तक हो । यस अघि हामीले सामाजिक संजाल, ब्लग र पिडिएफ फाइलहरू मार्फत् यी सूचनाहरूलाई सम्प्रेषण गर्ने गर्थ्यौं । त्यही छरिएर रहेका पिडिएफ दस्तावेजहरूले लिपिवद्ध गरेका कुराहरूलाई नै सम्पादन गरी यो पुस्तक तयार गर्ने निर्णय गरिएको हो ।

नेपालमा यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताको विषयमा व्यापक जनचेतनाको अभाव रहेको हामीले महसुस गरेका छौँ । समाजमा मात्र नभएर राज्यका विभिन्न संयन्त्रहरूमा समेत यस विषयमा न्यून बुझाइ रहेको, यस सम्बन्धि शब्दावली, पहिचान एवं विविधताहरूका बारेमा जानकारीको अभाव रहेको हामीले पाएका छौँ । यति मात्र नभएर नेपाली भाषामा यस विषयका बारेमा बुझ्नका लागि पर्याप्त अध्ययन सामाग्रीहरू विकास भइसकेका छैनन् । नेपालका सञ्चार माध्यमहरूले पनि यस विषयका बारेमा व्यापक रूपले गलत व्याख्या गरिरहेको प्रशस्तै उदाहरणहरू हामीले देख्न पाउछौँ ।






यसै पनि यस विषयमा व्यापक भ्रमहरू रहेको र त्यसमा पनि पर्याप्त अध्ययन सामाग्रीहरू उपलब्ध नहुँदा यस विषयका बारेमा बुझ्नका लागि चुनौतीहरू रहेको कुरालाई हामीले मनन गरि यस विषयमा थप स्पष्टता ल्याउन र यस विषयमा आधारभूत जानकारी स्थापित गर्नको लागि यो पुस्तक प्रकाशनमा ल्याएका छौँ । यस पुस्तकको उद्देश्य यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता बारेमा आधारभूत वा मूलभूत जानकारी स्थापित हुन सकोस् भन्ने हो ।

हामीले यस पुस्तकमा औपचारिक नेपाली भाषाको प्रयोग गरेका छौँ । मूलतः राज्यका विभिन्न संयन्त्रहरूमा कार्यरत व्यक्तिहरूलाई यस विषयमा बुझाई स्थापित गर्न र नीतिगत तहमा हुने निर्णयहरूले सही र उपयुक्त शब्दावली तथा भाषाको प्रयोग गर्न सकून् र यी शब्दावली तथा परिभाषाहरू कानुनी रूपमै अपनाउन सजिलो होस् भन्ने धारणाले यो पुस्तक प्रकाशन गरेका हौं । राज्यका विभिन्न संयन्त्रहरूमा कार्यरत व्यक्तिहरूमा समेत यस विषयमा सही बुझाई नहुँदा अपमानजनक वा गलत शब्दहरूको प्रयोग हुने, गलत ढङ्गको व्याख्या गरिने र गलत किसिमका कानुनी प्रावधानहरू ल्याउने समस्या हामीले भोगेका छौँ । यो पुस्तक अध्ययनकर्ताहरूका निम्ति उपयोगी हुन हुनका साथै सञ्चारकर्मी, सञ्चार माध्यम, शैक्षिक संस्था तथा पाठ्यक्रम एवं पाठ्यसामाग्री निर्माताहरूका लागि पनि स्रोत सामाग्रीका रूपमा उपयोगी हुनेछ ।

यस पुस्तकमा हामी केवल आधारभूत विषयवस्तुहरूको सेरोफेरोमा सीमित रहेका छौँ । यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताको विषयमा हामी भविष्यमा अझै थप स्रोत सामाग्रीहरू निर्माण एवं प्रकाशन गर्नेछौँ ।
यो पुस्तक सबै माझ उपयोगी हुनेछ भन्ने आशा गर्दछौँ ।

**हाम्रा केही निकट भविष्यका प्रकाशनहरू :-**

१) यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताको बहुभाषी अनलाइन शब्दकोष;

२) यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता बारे विस्तृत र सघन व्याख्या सहितको पुस्तक;






३) औपचारिक नेपाली भाषामा लेखिएको यही पुस्तकको बोलीचाली नेपाली भाषाका संस्करणहरू;
४) यस्ता सामाग्रीहरू नेपालको प्रादेशिक औपचारिक भाषाहरूमा।

**सहयोगका लागि आव्हान :** हामीले यस पुस्तकको केही सीमित संख्यामा छपाई कार्य गराएर नेपाः उपत्यका (काठमाडौँ उपत्यका) स्थित सरकारी निकायहरू लगायत विभिन्न विश्वविद्यालय, पुस्तकालय, गैर-सरकारी संस्था तथा नागरिक समाजलाई समेत प्रदान गर्नेछौँ। यो पुस्तकलाई नेपालको हरेक कुना-कुनामा पुऱ्याउने, यसको ब्रेल संस्करण निकाली दृष्टिविहीन व्यक्तिहरूका लागि उपलब्ध गराउने, कम्तीमा प्रादेशिक औपचारिक कामकाजी भाषाहरूमा अनुवाद गरी उपलब्ध गराउने, बालबच्चाहरूका निम्ति उपयुक्त प्रकारको सामाग्री प्रकाशन गर्ने, अडियो पुस्तक निकाल्ने, लगायतका कार्यका लागि हामीलाई आर्थिक सहयोग गर्न इच्छुक व्यक्तिहरूले सम्पर्क गर्न पनि आव्हान गर्दछौँ। त्यसै गरी यसै पुस्तकलाई पनि सामाजिक संजाल, ईमेल समूह लगायतका मार्फत् अझै व्यापक पहुँचमा पुऱ्याइदिन सबै माझ अपिल गर्दछौँ।

**हाम्रा केही मागहरू :-**

- **संघीय संसद :** नेपालको संविधान २०७२ मा प्रयुक्त 'लैङ्गिक तथा यौनिक अल्पसंख्यक' शब्दावलीलाई 'सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताका व्यक्ति' शब्दावलीले प्रतिस्थापन गरिपाउँ। त्यस सँग सम्बन्धित विविधता, शब्दावली एवं परिभाषा यस पुस्तकबाट साभार गरिपाउँ।
- **शिक्षा मन्त्रालय तथा पाठ्यक्रम विकास केन्द्र :** 'यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता'लाई विद्यालय तहको सामाजिक शिक्षा अन्तरगत पाठ्यक्रममा समावेश गरिपाउँ। पाठ्यपुस्तकमा उल्लेख हुने सामाग्री यही पुस्तकबाट साभार गरिपाउँ।
- **शिक्षा मन्त्रालय तथा सम्पूर्ण विश्वविद्यालहरू :** 'यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता'लाई विश्वविद्यालय तहमा समेत पाठ्यक्रममा समावेश गरिपाउँ।





पाठ्यपुस्तकमा उल्लेख हुने सामाग्री यही पुस्तकबाट साभार गरिपाउँ भने यस पुस्तकलाई सन्दर्भ पुस्तक (reference book) का रूपमा सूचिरकरण गरिपाउँ ।

- **विद्यालय (स्कुल तथा कलेज) :** यस पुस्तकलाई सन्दर्भ पुस्तकका रूपमा प्रयोग गरि विद्यालय प्रशासनद्वारा यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताको विषयमा विद्यार्थीहरूलाई जानकार बनाउन पहल गरिपाउँ ।
- **कानून आयोग :** यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता सम्बन्धी यस पुस्तकमा उल्लेखित शब्दावली तथा परिभाषाहरू कानुनी रूपमा अपनाउन नेपाल सरकारलाई सिफारिस गरिपाउँ ।
- **कानून, न्याय तथा संसदीय मामिला मन्त्रालय :** यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता सम्बन्धी यस पुस्तकमा उल्लेखित शब्दावली तथा परिभाषाहरू कानुनी रूपमा मान्यता दिलाउन आवश्यक कारवाही गरिपाउँ ।
- **गृह मन्त्रालय :** 'यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता' सम्बन्धीका शब्दावली र तिनका परिभाषाहरूलाई औपचारिक रूपमा मान्यता दिलाउन आवश्यक कार्यवाही गरिपाउँ । यसले राज्यका सबै सरकारी संयन्त्रहरूलाई यस विषयमा कामकाज गर्नुपर्दा मद्दत गर्नेछ ।
- **संसद (संघीय तथा प्रदेश) :** यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता सम्बन्धी यस पुस्तकमा उल्लेखित शब्दावली तथा परिभाषाहरू कानुन निर्माणका क्रममा आधार मान्ने र प्रयोग गर्ने गरिपाउँ, कानूनी मान्यता दिलाइपाउँ ।
- **राष्ट्रिय मानव अधिकार आयोग :** मानव अधिकार कार्यवाहीका निम्ति यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता सम्बन्धी यस पुस्तकमा उल्लेखित शब्दावली एवं परिभाषाहरू औपचारिक रूपमा अपनाउने कार्य (adopt) गरिपाउँ ।
- **नेपाल प्रज्ञा प्रतिष्ठान :** नेपाली बृहत् शब्दकोष, प्रज्ञा अङ्ग्रेजी-नेपाली शब्दकोष लगायतका शब्दकोषहरूमा यस पुस्तकमा उल्लेखित शब्दावली तथा तिनका अर्थहरूलाई समावेश गरिपाउँ ।





- **सङ्घीय मामिला तथा सामान्य प्रशासन मन्त्रालय :** यस पुस्तकको ई-प्रति सम्पूर्ण स्थानीय पालिकाहरूलाई पठाइपाउँ ।
- **राष्ट्रिय महिला आयोग :** महिलाको परिभाषा अन्तर्गत पारलैङ्गिक महिला तथा अन्तरलिङ्गी महिलाहरू समेत समावेश हुने र महिला भन्नाले केवल पुरुष प्रति मात्र आकर्षित हुन सक्ने वा पुरुषसँग मात्र सम्बन्ध राख्न सक्ने भन्ने सीमित मान्यता भन्दा पर महिलाहरू विविध यौन अभिमुखिकरण / झुकाव भएका हुन सक्छन् भन्ने विषयमा समाविष्ट गरि 'महिला'को परिभाषा जारी गरिपाउँ । साथै नेपाल सरकारलाई समेत सोही बमोजिम सिफारिस गरिपाउँ ।
- **मन्त्रीपरिषद् (संघीय तथा प्रादेशिक) :** यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता सम्बन्धी यस पुस्तकमा उल्लेखित शब्दावली तथा परिभाषाहरू औपचारिक रूपमा मान्यता पाउने निर्णय गरिपाउँ ।
- **सम्पूर्ण सरकारी तथा संवैधानिक निकायहरू :** यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता सम्बन्धी यस पुस्तकमा उल्लेखित शब्दावली तथा परिभाषाहरू अपनाउने र सही शब्दावली एवं परिभाषा प्रयोग गर्न गराउन आफ्नो अख्तियारीले भ्याउने सक्ने जेजस्ता पहल गरिपाउँ । यो पुस्तक प्राप्त गर्ने सम्पूर्ण सरकारी तथा संवैधानिक निकायहरूलाई आफ्नो मातहतमा रहेका विभाग, शाखा, उप-शाखा लगायत सबै निकायहरूमा यो पुस्तकको ई-प्रति पठाइपाउँ ।

यो पुस्तकको छापिएको प्रति पाएका निकायहरूले पुस्तकलाई आफ्नो पुस्तकालयमा समावेश गर्न आफ्नो निकायको सबैमा यस विषयको पुस्तक प्राप्त भएको सूचना प्रवाह गर्न समेत अपील गर्दछौँ ।

**यस पुस्तकको ई-प्रति प्राप्त गर्न लिङ्कमा थिच्नुहोला ।**

https://nepalcfc.org/wp-content/uploads/Basic_SOGIESC_Nepali.pdf






अथवा यो QR Code स्क्यान गरि प्राप्त गर्नुहोला ।



**यस पुस्तकको दृष्टिविहीन व्यक्ति, न्यून दृष्टि भएका व्यक्ति तथा स्क्रीन रीडरको प्रयोग गरि अध्ययन गरिरहेका व्यक्तिहरूको निम्ति पहुँचयुक्त (Accessible) संस्करण देहायको लिङ्कबाट प्राप्त गर्नुहोला ।**

https://nepalcfc.org/wp-content/uploads/Basic-_SOGIESC-Nepali-Accessible.docx

<u>संयुक्त जारी</u>






रुक्शना कपाली
कार्यकारी निर्देशक
क्वयेर युथ ग्रुप
दर्ता नं : २४४९३५/०७७/०७८
चलानी नं : ०२३/७७/७८
queeryouthgroup.nepal@gmail.com




इशान रेग्मी
कार्यकारी निर्देशक
क्याम्पेन फर चेन्ज
दर्ता नं : १६८३०१/७३/७४
चलानी नं : २३/२०७७
campaignforchange17@gmail.com

***